GANGTOK YULSA TAMANG MONTHLY COLLECTION

# གངས་ཏོག་ཡུལ་ས།

(སྒང་ཏོག་ཡུལ)

ལོ་༢ ཨང་༡ VOL-2 No: 111 གངས་ཏོག་ཡུལ་ས /GANGTOK YULSA- गाङतोक युल्सा JAN-2003 साओ रु.5/-

## ཨན་ད་མན་ ནི་ཀོ་བར་རི་ ཏ་མང་ སྒྱུ་ རྩེད་ སྒྲུབ་ ལྷན་ཏེ

སི་ཀྐིམ་ ཏ་མང་ བཅུད་ སང་གལ་ སྒྲུབ་ གོབ་ མི་སེམ་ ཡན་དོག་ སཁལ་ནི་ དེལ ཨོ་ནི་ གྱུ་གར་ དུན་ལ་ ཨན་ད་མན་ ནི་ཀོ་བར་ པོརཊ་ བླེར་ རི་ ཏ་བལ་ ལིང་ ཀོར་ ཀོར་བ་ དེང་སེང་རི་ བོ་ གེན་སི་ནམ་ ཡན་དོག་ སི་ཀྐིམ་ ཡཇི་བ་ལ་ བུ་ལ། སི་ཀྐིམ་ གྱལ་ ནི་བ་ལ་ ཧྲོ་ཛ་ མི་སེམ་སི་ རྐྱང་ལ་ རྒྱལ་ལ་ ཏ་མང་ དྲུ་ཨི་ ཕེན་ སྒྲུབ་ ཛྱ་ན་

cont..page..2

## सिक्किमका तामाङ कलाकारहरू अन्दमान निकोबर द्वीपमा

गान्तोक १५ जनवरी । सिक्किम सरकारको संस्कृति विभागको निर्देशनमा सिक्किम तामाङ बौद्ध संघका तामाङ कलाकारहरु हालैमा भारतको दक्षिण पूर्वमा अवस्थित अन्दमान निकोबर द्वीपसमूहमा आयोजित 'वार्षिक द्वीप पर्यटन महोत्सव' मा भाग लिएर भर्खरै......रहल पृष्ठ ३ मा

## जोरथाङमा सिक्किम तामाङ बौद्ध संघको सभा

जोरथाङ १० जनवरी । दक्षिण सिक्किमको जोरथाङमा श्री जे.एस. लामाको प्राङ्गणमा गत ९ जनवरी २००३ को दिन सिक्किम तामाङ बौद्धका अध्यक्ष श्री बी.टी. तामाङको अध्यक्षतामा एक जरुरी सभा बस्यो । पशुपालन विभागका मन्त्री श्री प्रेमसिंह तामाङ मुख्य अतिथि थिए भने अन्य पछौटेवर्ग बोर्डका अध्यक्ष श्री जे.बी. तामाङ विशिष्ट अतिथि हुनुहुन्थ्यो । उक्त सभामा दक्षिण र पश्चिम जिल्लाका प्राय: दुई हजार सदस्य तथा सरकारी कर्मचारीवर्गको उपस्थिति....पृष्ठ १ को रहल

## जोरथाङमा ञ्युङने सम्पन्न

गत दिसम्बर २००२ को २५ देखि ३० ता सम्म जोरथाङको डाँडा गाउँमा धर्मगुरु ल्हाब्मा बमजनको कुशल नेतृत्व औ श्री जे.एस. लामा योञ्जनको आयोजनामा दुई छ्या ञ्युङने सम्पन्न भयो। यस उपवास शिविरमा जोरथाङ लगायत पिपले, सालघारी, सोरक, नाम्ची, मणिराम, गान्तोक औ कालेबुङबाट जम्मा ८५ जना उपासक/उपासिका हरुले उपवास बसे । यतिबेला विद्यालयहरुको शीत कालीन बिदा हुने हुनाले वृद्धहरुको तुलनामा स-साना विद्यार्थी भाइ बहिनीहरुले......रहल पृष्ठ ३ मा ञ्युङने बस्न

## पश्चिम सिक्किमको सोरेङमा ञ्युङने उपवास

गतवर्ष झैं यसपाली पनि सोरेङ बस्ती ञ्युङने संघको आयोजनामा जनवरी २ देखि ७ ता: सम्म दुई छ्या ञ्युङने उपवास सम्पन्न भयो । सोरेङ, सिर्दलिङ, ही बर्मेक, च्याखुङ, मडसारी, मंगले, सोरक, मणिराम बाट तामाङ, शेर्पा, गुरुङ, प्रधान, राई, लिम्बु गरेर जम्मा ११५ जना उपासक/उपासिकाहरुले भाग लिएका थिए । गतवर्ष भन्दा यसपाली त्यहाँका.....पृष्ठ १ को रहल

## तामाङ र लिम्बु अनुसुचित जनजाति सूचीमा गाभियो

गत २००२ को दिसम्बर १८ ता: देखि भारतको अन्य जनजातिसरह सिक्किम र पश्चिम बंगालका तामाङ र लिम्बुलाई पनि भारत सरकारको लोकसभा र राज्यसभा दुवै सदनले अनुसुचित जनजातिको सूचीमा अन्तर्भुक्त गरेको छ । यही मांग लिएर २३ जनवरी १९८१ को दिन अखिल भारतीय तामाङ बौद्ध संघको जन्म भएको थियो।....रहल पृष्ठ ३मा

## यस अंक भित्र



## काठमाडौंमा प्रथम अन्तर्राष्ट्रिय तामाङ सम्मेलन सम्पन्न



गतवर्ष २००२ को दिसम्बर १९ ता: देखि २२ ता: सम्म काठमाडौंको भृकुटी मण्डप प्रदर्शनी कक्षमा नेपाल तामाङ घेदुङको आयोजनामा प्रथम अन्तर्राष्ट्रिय तामाङ सम्मेलन भव्यरुपमा सम्पन्न भयो। यस सम्मेलनमा नेपाल लगायत भारत, भुटान, म्यानमार, थाईल्याण्ड, हङकङ, अस्ट्रेलिया औ अमेरिकाका तामाङ प्रतिनिधिहरुले भाग लिएका थिए। भारतबाट अखिल भारतीय तामाङ बौद्ध संघका प्राय: दुई सय तामाङ प्रतिनिधिहरु पुगेका थिए । समारोहको प्रथम दिनमा नेपालका उप प्रधानमन्त्री श्री बद्री प्रसाद मण्डलद्वारा तामाङ जातिको वेशभूषा, थाङ्का, पुस्तक, गरगहना, वाद्यवादन,.....रहल पृष्ठ ३मा

GANGTOK YULSA TAMANG MONTHLY COLLECTION

# གང་ཏོག་ཡུལ་ས་

གང་ཏོག་ཡུལ

ལོ་ ༢ ཊང་ ༣ VOL-2 No:3 jan-2003

## सम्पादकीय

### वेशभूषा प्रदर्शन गरेरमात्र हुँदैन व्यवहारमा ल्याउन जरुरी छ।

*अखिल भारतीय तामाङ बौद्ध संघको १७ औं अधिवेशन चाल्सामा २४ जनवरी २००२ को दिन सिक्किम तामाङ बौद्ध संघका युवायुवतीहरुले तामाङ वेशभूषाको प्रदर्शन (Fashion show) गरेर अन्यत्रका तामाङहरुलाई चकित पारे। प्रदर्शन पश्चात पण्डाल बाहिर ती मोडलहरुसित फोटो खिँचाउन भीडका साथ तामाङहरु आतुरिएको देखिएको थियो। यसरी नै सन् २००१ मा गान्तोकमा भएको 'सार्क पर्यटन उत्सव' मा पनि तामाङ वेशभूषाले सबैलाई पूर्ण आकर्षित पारेको बताइरहन नपर्ला। चाल्सामा सिक्किमले प्रदर्शन गरेपछि अ.भा.ता.बौ. संघ तथा नेपाल तामाङ घेदुङले ती वेशभूषालाई अनुमोदन गऱ्यो।*

*त्यसबेला त्यहाँ उपस्थित तामाङहरुले हर्षोल्लासका साथ ताली बजाएर पूर्ण समर्थन गरेको संकेत दिएको थियो। तर वर्षदिन बितेर गयो ताली बजाएर जतिको बहुमतमा समर्थन जनायो आजसम्म वस्त्र धारण गरेर व्यावहारिक रुपमा बहुमत देखाउन सकेकका छैनन्। ताली बजाउन मात्र त चटकवालाले बाँदर, भालू नचाउँदा हेर्ने दर्शकहरुले पनि जानेको हुन्छ। वर्षदिन बितेर जाँदा पनि व्यवहार मा कम आएको देख्दा त्यसदिनको वेशभूषा प्रदर्शनी चटक देखाएकै सम्झना आएर तामाङहरुले ताली बजाएको त होइन ? भन्ने प्रतीत हुँदछ। फेरि तामाङको जातीय पोशाक देखेर घृणा मान्ने, नाकमुख खुम्च्याउने तामाङ पनि त कम छैनन् होलान्। कतिले चाहिं लोछार र अधिवेशनमा मात्र भानुजयन्तीको दिन दौरा सुरुवाल लाउन परे झैं लाउन पर्ने अनुभव गरेका होलान्। तर त्यसो होइन। सबै तामाङहरुले दैनिक जीवन, चाड्पर्व, उत्सव, जमघट, सभा सम्मेलन, शुभ विवाह, मरौकार्य सब समय नै आफ्नो जातीय पोशाक धारण गर्नु, भाषा बोल्नु जातीयता झल्काउनु होइन र ?*

*तामाङहरुले धार्मिक कर्मकाण्डहरुमा विभिन्न रुढिवाद मिसाएर पालन गरी आफू सिङ न पुच्छरको हुनु नै जातीयता झल्काउनु सम्झेका छन्। यी दुईमा कुन चाहिं सही हो तामाङ बुद्धिजीवीहरुले स्वच्छ विवेकले चिन्तन र पालन गर्नुपर्ने देखिन्छ। होइन तामाङको जातित्वमा गर्व गर्ने नै हो भने शिशु अवस्था देखि नै जातीय वेशभूषा लगाउने बानी बसाउनु पर्छ। शुभ विवाहमा वरवधुलाई दौरा सुरुवाल, थ्री पीस टाई सुट, ढाका टोपी, साडी चोली, सिन्दुर पोतेले अलंकृत गरेर अन्माउन छोडेर अनिवार्य रुपमा तामाङ पहिरनमा नै सजाएर हाम्रा नव वरवधुलाई विदा गर्न तथा प्रवेश गराउन सिकौं।*

*लास्सो!!!*

### जोरथाङमा सि.ता.बौ.स. को सभा

.....पृष्ठ १को रहल

थियो। सभाको प्रारम्भमा जे.दुस. लामाले स्वागत भाषण राखे। त्यसपछि वक्ताहरु सि.ता.बौ.स.का महासचिव के.एम. तामाङ, अध्यक्ष बी.टी. तामाङ, जे.बी. तामाङले क्रमैसित भारतको संविधान अन्तर्गत सिक्किमका तामाङ र लिम्बु जातिलाई अनुसुचित जनजातिको सूचीमा सामेल गराईदिनु भएकोमा सम्माननीय मुख्य मन्त्री श्री पवन चामलिङप्रति आभार प्रकट गर्नुभयो। संघका महासचिव के.एम. तामाङले सम्माननीय मुख्यमन्त्री लगायत सम्पूर्ण विधायक तथा मन्त्रीवर्गप्रति संघको तर्फबाट धन्यवाद ज्ञापन गरे। अध्यक्ष बी.टी. तामाङले आफ्नो सम्भाषणमा हामीलाई सिक्किम सरकारले अविस्मरणीय गुण लगाएको र यी गुणलाई अहिल्यै बिर्सन नहुने बताए। तामाङ र लिम्बुजातिको यस मांगलाई कदर गरेर सफल गराईदिनु भएकोमा यी दुबै जातिका शीर्ष समिति मिलेर यथाशीघ्र सम्माननीय मुख्यमन्त्रीप्रति अभिनन्दन टक्र्याउन एक भव्य समारोह आयोजन गर्ने जानकारी सभालाई दिनुभयो। जे.बी. तामाङले पनि आफ्नो वक्तव्यमा तामाङ जाति पछौटे भएको र अब सिक्किम सरकारको आशीर्वादले केही उन्नति अवश्य गर्न सक्नेछौं भन्नु भयो। मुख्य अतिथि तथा मन्त्री श्री प्रेमसिंह तामाङले सभालाई सम्बोधन गर्दै भन्नु भयो 'सम्माननीय मुख्यमन्त्रीको हृदयमा सत्यता र स्वच्छता भएको कारण कैयौं वर्षदेखि थाँतीमा रहेको मांग आज पूरा भएको छ। उहाँको उदारता अनि सत्प्रयासले गर्दा नै हामी तामाङ र लिम्बु जाति अनुसुचित जनजातिको सूचीमा सामेल हुन सकेका छौं। उहाँको गुणलाई हामीले भूल्नु हुँदैन। उहाँले यी दुई जातिले उन्नति गर्ने गोरेटो खोलिदिएका छन्।' सभाको अन्तमा डा. गोविन्द लामाले उपस्थित सभासदप्रति धन्यवाद ज्ञापन गरेपछि सभा समाप्त गरियो।

---

ལ་སི་ ལྷུན་པའི་ ཁམ་བ་ལ་ ཆུ་ལ། རྟོ་ཛ་ སྒུ་བ་གོ་བ་ གེ་སེམ་ རི་ ཚ་མེ་ ཏྲོན་ ཚོ་ཀྲན་ ལ་སི་ནམ་ མེན་དོ་ ཙུང་ནེ་ དྲལ་ཁེན་ དྲེའི་ཁེན་ ཐེན་ སྒུ་བ་ ད་གུ་ ཆུ་བ་ པི་སམ་ རྟོ་ཛ་ གེ་སེམ་ལ་ ཙོ་རྟོ་བང་ པལ་ ནེ་མ་ ད་མང་སེ་ ལ་བ་ལ་ ཆུ་བ། རྟོ་ཛ་ ཡིང་ གོར་གོར་བ་ རིང་སེང་རི་ ཡུལ་སལ་ ཚོ་ཀྲན་ གྱུལ་ས་ ད་གུ་གྱུམ་ གེ་དྲན་ ད་གུ་ལ་ སྒུ་བ་ གོ་བ་ གེ་སེམ་ ད་གུ་སེ་ པོ་ གེན་བ་ལ་ ཆུ་བ། སྒུན་ གྱུལ་ས་ ད་གུ་ལ་ སྒུ་བ་ གོ་བ་ གེ་སེམ་ ད་གུ་རི་ ཨ་སམ་ མཉེ་ཕུར་ མི་ཛོ་རམ་ དྲི་ཕུ་ར་ ནུབ་ བང་གལ་ ཨུ་ཏེ་ས་ས་ ཐེན་ སི་ཀྱིམ་ གྱུལ་ས་གྱུམ་ པོ་ གེན་བ་ལ་ ཆུ་བ། ༡༥ ངི་སམ་བར་ ༠༢ ཀུ་ཏུ་ གན་ཏོག་གྱུམ་ ཉེ་བ་ལ་ རྟོ་ཛ་ ད་མང་ སྒུ་བ་གོ་བ་ གེ་སེམ་ དྲང་ལ་ སྒུ་བ་གོ་བ་ གེ་ཁོར་ ཛོ་ག་སེ་ ནམ་ ༢༦ ཉྲིང་བ་ རེད་ལ་ ལི་ཚ་ ༡༡ ཛན་ཝ་རི་ ༠༢ ཀུ་ཏུ་ གན་ཏོག་ ངོ་ཁ་ཛེ།

## जोरथाङमा ञ्युङने सम्पन्न

.....पृष्ठ १ को रहल

अवसर पाए । प्रत्येक साँझ ६ बजी धर्मगुरुबाट दैकि जीवनमा काम लाग्ने सरल नेपालीमा प्रवचन सबैले सुन्ने अवसर पाए । अन्तिम दिनको समापन कार्यक्रममा ञ्युङने विषयमा उपासक/उपासिकाबीच हाजिरी जवाब प्रतियोगिता राखिएको थियो । जसमा पुरुष पक्षबाट जोरथाङका दापग्याल लामा, स्त्री पक्षबाट पिपलेकी पासाङ तामाङ अनि दुवै पक्षको प्रश्नोत्तरमा कालेबुङको सोमा योञ्जनले बिजय हासिल गरेर पुरस्कार ग्रहण गरे । अन्तिम दिनमा भेला भएका सबै धर्मानुरागीहरुले आवाल बृद्ध बनिता सबैलाई शील पालन, चरित्र निर्माण औ पुण्य संचयमा लाभ पुऱ्याउने यसप्रकारको ञ्युङने उपवास अर्को वर्ष पनि यसरी नै पाठशालाको विदाको समय राख्न पर्ने मन्तव्यका साथै त्यस ञ्युङनेको निम्ति आर्थिक सहयोग दिने दाताहरुले वचन दिएका छन् ।

## तामाङ र लिम्बु अनुसुचित

.....पृष्ठ १ को रहल

२२ बर्षसम्म संवैधानिक रुपमा संघर्ष गरेपछि बल्ल यो अधिकार यी दुई जातिको हात लाग्यो । यसको निम्ति अखिल भारतीय तामाङ बौद्ध संघ अनि संघका महासचिव लगायत अन्य पदाधिकारीवर्ग धन्यवादका पात्र बनेका छन् । अनि संघका संस्थापक सदस्य जो आज कतिपय महानुभावहरु बितेर गए औ कतिपय जीवित छन् उनीहरुको त्यतिबेलाको आफ्नो जातिको हितमा देखेको सपना आज पूरा भएको छ । उनीहरुको यो पादक्षेप औ योगदान अविस्मरणीय छन् । यता सिक्किममा पनि श्री पवन चामलिङको नेतृत्वमा रहेको सिडेफ सरकारको निरन्तर प्रयास पश्चात यी दुई जातिको अधिकार दिलाउन सिक्किम सरकार सफल बनेको छ । सिक्किम प्रजातान्त्रिक मोर्चाको घोषणा पत्रमा नै सिक्किमका यी दुई जातिलाई ट्राइबलको सूचीमा अन्तर्भुक्त गर्ने कुरा उल्लेख गरे अनुसार आज मुख्यमन्त्री चामलिङले आफ्नो वचन पूर्ण गरेका छन् । अब देशका अन्य जनजाति सरह सहुलियतहरुको उपभोग यी दुई जातिले पनि गर्न पाउनेछन् । अहिले यी दुई समुदाय लगायत अन्य विभिन्न संघ संस्थाहरुबाट पनि श्री चामलिङले यस कल्याणकारी कार्य गरेकोमा बधाई प्राप्त गरिरहेका छन् ।

## पश्चिम सिक्किमको सोरेङमा

..........पृष्ठ १ को रहल

भक्तजनमा ञ्युङनेप्रति धेरै उत्सुक्ता बढेको थियो । पहिलो जनवरीको दिनसम्म त्यहीं पारी ओखरेको डाँडासम्म हिउँ परेर कठ्याङग्रिने जाडो भएता पनि भालिपल्ट अर्थात् २ ता: देखि नै मौसम घमाइलो भएर ञ्युङनेपाहरुलाई कुनै कठिनाई भएन । ञ्युङने सञ्चालनको निम्ति गान्तोबाट धर्मगुरु ल्हाक्पा बमजन, कालेबुङ तामाङ गोन्पाका लामावर्ग तथा स्थानीय लामाहरुको सहभागिता थियो । आयोजक समितिका अध्यक्ष श्री के.एस. राई, सचिव देवमान तामाङ, कोषाध्यक्ष एम.बी. तामाङ तथा अन्य सदस्य बर्गको सुचारु व्यवस्थापनको कारण भव्यरुपमा सम्पन्न हुनसक्यो । यस ञ्युङनेलाई सफल तुल्याउनको निम्ति सोरेङ समष्टिका क्षेत्र विधायक तथा शिक्षा मन्त्री श्री आर.बी. सुब्बा औ च्याखुङ च्याखुङ समष्टिका विधायक तथा पशुपालन मन्त्री श्री प्रेमसिंह तामाङ आर्थिक सहयोग प्राप्त भएको थियो । अन्तिम दिनको समापन समारोह मा ल्हाक्पा म्हेमेको सुनेर कहिले तृप्त नहुने प्रवचन सुन्न-औ आशिष ग्रहण गर्न मन्त्री प्रेमसिंह तामाङ लगायत विराट संख्यामा धर्मप्रेमीहरुको आगमन भएको थियो । ञ्युङनेपाहरुको प्रोत्साहनको निम्ति हाजिरी जवाब प्रतियोगिता राखिएको थियो जसमा क्रमैले मंगलेका श्री एम.बी. तामाङ, सिङलिङकी कौशिला तामाङ अनि

## काठमाडौंमा प्रथम अन्तर्राष्ट्रिय

......पृष्ठ १ को रहल

चलचित्र, तामाङ परिकारका भोजन आदिको प्रदर्शनी तथा बिक्री पसलहरुको उदघाटन गरियो । दोस्रो दिनमा बिहान दश बजेदेखि मोटर साइकल रैली, लामा नृत्य, बोन्बो नृत्य तथा डम्फु नृत्य लगायत विभिन्न झाँकीहरुका साथमा प्राय: २५ हजार तामाङहरुका शोभायात्रा शुरु गरेर दरबारमार्ग, दशरथ रंगशाला, विशाल बजार हुँदै पुन: भृकुटी मण्डपमा आएपछि सभामा परिणत भयो । सम्मेलनको उदघाटन नेपालका प्रधानमन्त्री लोकेन्द्र बहादुर चन्दको बाहुलीबाट भयो । त्यसै अवसरमा अजितमान तामाङद्वारा लिखित 'तामाङ जातिको मौखिक इतिहासका अवशेषहरु' नामक पुस्तकको विमोचन प्रधान मन्त्रीले गरे । तेस्रो दिन सबै देशबाट आएका प्रतिनिधिहरुको बन्द सभा (Close Session) बस्यो । त्यस सभाले 'अन्तर्राष्ट्रिय तामाङ परिषद' नामक संस्था गठन गऱ्यो । उक्त परिषदको अध्यक्ष परशुराम तामाङ मनोनित भएको छ भने अन्य सदस्यको निम्ति सबै सहभागी देशबाट मनोनित गरिनु पर्ने भएको छ । यस परिषदले विश्वकै तामाङहरुको अस्तित्वको संरक्षण तथा संवर्धन गर्ने उद्देश्य भएको कुरा नेपाल तामाङ घेदुङका अध्यक्ष श्री परशुराम तामाङले जानकारी दिनुभयो । समारोहमा तामाङ ब्हाई तथा नृत्य प्रतियोगिता, तामाङ भाषामा बनिएका चलचित्र प्रदर्शनीको व्यवस्था पनि आयोजकवर्गले गरेका थिए । अन्तिम दिनको कार्यक्रममा तामाङ खेलाडीहरुले ताइक्वान्डो खेलको प्रदर्शन गरेर दर्शकवर्गलाई चकित तुल्याए । अ.भा.ता.बौ.संघका भूतपूर्व अध्यक्ष डा. जी.एस. योञ्जनले हाम्रो विकासको निम्ति अब विश्वकै तामाङहरु कुनै किसिमको भेदभाव नराखिकन एकसूत्रमा बाँधिनु पर्ने समय आएको बताउनु भयो । अन्तमा अध्यक्ष परशुराम तामाङद्वारा अध्यक्षीय भाषण प्रस्तुत गरेपछि सबै देशका तामाङहरुको सामुहिक नृत्यका साथै समारोह सम्पन्न भयो ।

## सिक्किमका तामाङ कलाकारहरु

....पृष्ठ १ को रहल

गान्तोक आईपुगेको छ । यहाँबाट गएका टोलीले आफ्नो परम्परागत तामाङ ब्हाई तथा नृत्य (स्याबा) सफलतापूर्वक प्रस्तुत गर्न सक्षम भएका छन् । श्री निमा तामाङको अगुवाईमा गएका टोलीमा जम्मा १२ जना युवायुवती कलाकारहरु थिए । उक्त महोत्सवमा भारतका अन्य राज्यतिरबाट पनि सांस्कृतिक टोलीहरु गएका थिए । पूर्वोत्तर राज्यहरुमा असम, मणिपुर, मिजोराम, त्रिपुरा, उडिस्सा, पश्चिम बंगाल र सिक्किम सामेल थिए । सिक्किमबाट भने तामाङ ब्हाई र नृत्यको निम्ति प्रस्ताव आएकोले हाम्रा यी तामाङ युवाहरुलाई आफ्नो कला प्रदर्शन गर्ने अवसर जुरेको थियो । १४ दिसम्बर २००२ को दिन ती कलाकारहरु यहाँबाट प्रस्थान गरी उक्त महोत्सवमा आफ्नो कला प्रस्तुत गरेर त्यहाँका नागरिकहरुको हृदयमा तामाङ जातिको स्मृतिको छाप छोडेर २८ दिन पश्चात ११ जनवरी २००३ को दिन सकुशल आईपुगेको समाचार निमा तामाङबाट प्राप्त भएको छ ।

---

सोरेङका श्री डी.एस. सुब्बाले विजय हासिल गरे । मन्त्री श्री तामाङज्युले पनि छोटकरीमा धार्मिक वक्तव्य राख्नु भयो । अन्तमा ल्हाक्पा म्हेमेबाट सारगर्भित प्रवचन पश्चात छेवाङ तथा छोग वितरणका साथ सम्पूर्ण कार्यक्रम समाप्त भयो ।

# मनुष्य-जीवनको अमूल्य समय

-लामा एच. एस. योञ्जन
गोपालधारा, मिरिक

मनुष्यजीवनको समय अमूल्य छ। समयको मूल्य नजान्नुको कारण नै मानिसहरुको धेरै जस्तो समय खेरो जान्छ, यसकारण आत्म कल्याणमा विलम्ब भईरहेछ। भनिन्छ कि कानून-पेशा, वकील-बैरिष्टर प्रभृति त समयको सदुपयोग गर्दछ, किनभने उनीहरु आफ्नो समयको प्रत्येक मिनटको पैसा लिंदछ, तर पैसाले मनुष्य जीवनको वास्तविक ध्येय सिद्ध हुँदैन। जुन मनुष्य आफ्नो अनमोल समयलाई पैसाको बदलामा बेचिदिंदछ पैसाले हुनेवाला भावी दुष्परिणामलाई नजान्नुको कारण पैसा एकट्ठा गर्दै जान्छ औ जीवितकालमा त्यसबाट केही भौतिक सुखको प्राप्ति अवश्य गर्दछ, त्यो वस्तुतः कल्याणमार्गमा अलिकति पनि अग्रसर हुँदैन। मर्ने बेलामा उसले एकत्र गरेको धन यहीं नै छोडेर जानुपर्छ, त्यसले पनि उसलाई केही लाभ हुँदैन, प्रत्युत त्यो शोक औ चिन्तालाई बढाउने मात्र हुँदछ। अतएव जो धन, मान आदिको मोलमा आफ्नो अमूल्य समयलाई बेचिदिंदछ, ऊ आफ्नो समझमा बुद्धिमान भएर पनि वास्तवमा चैं बुद्धिमान होइन। बुद्धिमान त उसैलाई भन्न सकिन्छ जो जीवनको अमूल्य कार्य पनि उसैलाई सम्झनु पर्छ, जसबाट अमूल्य वस्तुको प्राप्ति होस्। त्यो अमूल्य वस्तु हो बुद्धत्वको तत्व ज्ञानबाट हुनेवाला आत्मोन्नतिको चरमसीमा आत्मस्वरुपको प्राप्ति, यसैलाई अर्को शब्दमा भनिन्छ भगवान प्राप्ति अथवा निर्वाण या मुक्ति।

दुःखको कुरो त के छ भने धेरै जसो भाइहरु त यस्तो छ आफ्नो अमूल्य समयलाई ताश, जूवा, शतरंजादि खेल्नुमा, सांसारिक भोगहरु एवं निद्रा, आलस्य, जाँड-रकसी, सिनेमा औ प्रमादमा व्यर्थ नै बिताइ दिंदछ। कति त यस्तो मूर्ख पनि छ जुन जीवनको अमूल्य समयलाई चोरी, जारी, झूठ, कपट, लडाई-झगडादि कुकर्ममा बिताएर यस लोक र परलोक दुवैबाट भ्रष्ट भएर दुःखको भाजन बन्दछ। कति चैं यस्तो पनि छ, गाँजा-भाङ, धतुरा, सिगरेट, कोकिन, ड्रग्स जस्तो मादक पदार्थको सेवन गरेर समयलाई र जीवनलाई नष्ट गरी अन्तमा नरकको भागी बन्दछ। यो समयको अत्यन्त नै दुरुपयोग हो।

असलमा उचित कुरो त के छ भने हामी प्रत्येक नै श्वास साङग्ये (भगवान) स्मरणमा बितोस् औ एकै क्षण पनि व्यर्थ नजावस्। फेरि प्रमाद र पापमा समय बिताउनु त अत्यन्त मूर्खता हो। साँचो कुरा त यो हो कि समयको उपयोगितालाई हामीहरुले अहिले सम्झेनौं, जस्तै पैसाको उपयोगितालाई सम्झेका छौं, त्यस्तै यदि समयको उपयोगिता सम्झेको भए त भुलेर पनि हाम्रो एकक्षणको समय साङग्येको नाम स्मरण बिना बित्ने थिएन। हामी किरायको मोटर गाडीमा चढेर कहीं जाँदछौं अनि बाटोमा कुनै सज्जनसित बात गर्नुको लागि गाडीलाई रोक्नु पर्छ त्यस समय हामी उसित राम्रो प्रकारले बात गर्नु चाहदैनौं, किनभने हाम्रो नजर त प्रतिमिनट करीब २ रु.चार्ज लिने गाडीमा लागि रहेको हुन्छ। यो हो पैसाको उपयोगिता सम्झिने नमूना। प्रति मिनटको २ रु. पनि हामी समयको उपयोगितालाई धेरै सम्झदैनौं। हाम्रो लागि उचित त यो हो कि जस्तै मोटर गाडीमा बसेर कसैसित बात गरेको समय हाम्रो मन पैसामा लागि रहेको हुन्छ। यस्तै प्रकार संसारको प्रत्येक कार्य गरेको समय अमूल्य जीवनको एक-एक क्षण मुख्यरुपले श्रद्धा-भक्ति औ प्रेमको साथ परम प्रेमास्पद भगवान करुणामयीको चिन्तनमा लगाउनु पर्दछ।

महाकरुणामयी आर्यलोकेश्वर भगवान तथागत सर्वक्षण सर्वसमय हामी अनाथ प्राणीहरुप्रति करुणाको बल्छी लगाई राखेको हुन्छ। हामी प्राणीहरुको अन्तःकरण मलीन भएको कारण श्रद्धा-भक्तिको अभावले त्यसको फाइदा लिन् सक्दैनौं। यसप्रकार गुरु निर्दिष्ट चिन्तन गर्दा गर्दा महाकरुणामयीका करुणाले कुनै पनि समय या कुनै क्षण हामीलाई भगवान प्राप्ति हुन सक्दछ। अतः जुन क्षणमा भगवान प्राप्ति हुँदछ, त्यसै क्षणको जीवन अमूल्य हो। त्यो समयको तुलना कुनैसंग पनि गर्नु सकिंदैन। तर त्यस्तो समय श्रद्धा-भक्ति अनि प्रेमपूर्वक चिन्तन गर्दा नै प्राप्त हुन सक्छ। यसकारण श्रद्धा-भक्ति प्रेमपूर्वक गुरु निर्दिष्ट सर्वव्यापी सर्व शक्तिमान भगवान तथागत आर्यलोकेश्वर महाकरुणामयीको स्वरुप सदासर्वदा चिन्तन गर्ने अभ्यास गर्नु पर्छ। यसो गरेदेखि हाम्रो सबै समय अमूल्य सम्झनु सकिन्छ। यदि प्रेम अनि श्रद्धा-भक्तिको कमीको कारण जीवन भरमा भगवान प्राप्ति भएन भनी केही चिन्ता छैन, किनकि अभ्यासको बलले अन्त समयसम्म भगवानको स्वरुप चिन्तनको लाभ अवश्यै हुनेछ। अनि भगवानले स्वयं भन्नु भएको छ–

**यथागारं दुच्छन्नं वुट्ठी समतिविज्झति ।**

**एवं अभावितं चित्तं रागो समति विज्झति ॥** ध. प. १३.

**अर्थ–** ठीकसंग नछाएको घरमा वृष्टिको पानी पस्दछ त्यस्तै ध्यान भावना रहित चित्तमा संसारको राग पस्दछ।

**यथागारं सुच्छन्नं वुट्ठी न समतिविज्झति ।**

**एवं सुभावितं चित्त रागो न समतिविज्झति ॥** ध. प. १४.

**अर्थ–** ठीकसित छाइएको घरमा वृष्टिको पानी पस्दैन त्यस्तै ध्यान भावनाले अभ्यस्त चित्तमा राग घुस्दैन। यसप्रकार निरन्तर अन्त समयसम्म भगवानको स्वरुपलाई चिन्तन गर्दै शरीर त्यागदछ उसले अवश्यै भगवान प्राप्ति गर्नेछ। पैसाले होइन, रत्नको मोलमा पनि मनुष्य-जीवनको अमूल्य समय हामीले पाउँदैनौं। यसकारण यस्तो अमूल्य समयलाई जसले व्यर्थमा बिताउँछ उसले अवश्य पश्चताप गर्नु पर्नेछ। यो क्षणभङ्गुर परिवर्तनशील संसारको सबै पदार्थ जीर्णशीर्ण नाशवान छ, सबै जीर्ण नाशलाई पाएर क्षण-क्षणमा हामीलाई चेतावनी दिइरहेको छ र पनि हामीहरु चेत्दैनौं। प्रति सेकेण्ड टिक-टिक गर्दै घडीले हामीलाई समय बताउँदछ र पनि हामी ध्यान दिँदैनौं। हाम्रो शरीरको नङ, रौं, केश औ अवस्थाहरु परिवर्तन भइरहेछ। इन्द्रियहरुको ह्रास तथा रोगहरुको उत्पति हामीलाई समय-समयमा मृत्युको याद दिलाइरहेछ र पनि हामी होशियार हुँदैनौं। यो भन्दा बढ्ता अरु आश्चर्य के हुन्छ ? हामीहरु मोहरुपी मदिरा पिएर यस्तो मोहित भइ गयौं कि त्यसको नशा कहिले पनि उत्रिन्दैन। जीन पुत्रहरुले संतकविहरुले पनि हामीलाई कम्ति चैं चेतावनी दिएकोछैन र पनि हामी कसैको पर्वाह गर्दैनौं,फेरि हाम्रो कल्याण कसरी हुन्छ ? भगवान बुद्धले झन बार-बार चेतावनी दिइराखेको छ–"उठ, जाग, सचेत हौ। दान,शील, शान्ति, वीर्य, ध्यान औ प्रज्ञालाई जान !" जब बुद्ध भगवान कै चेतावनी सुनेर पनि हाम्रो अज्ञान निद्रा भंग हुँदैन भने अरुको त के सुन्ने ! कर्त्तव्यलाई भुलेर भोग, प्रमाद, आलस्य अनि सांसारिक स्वार्थ-सिद्धिमा मोहित भएर तल्लीन हुनु नै निद्रा हो।

आकाशले व्याप्त चराचर भूत प्राणी भगवानको अंश भएको कारण भगवान तथागत कै स्वरुप नै हो। यसप्रकार सम्झेर उसको हितमा रत भएर उसको सेवा गर्नु अनि सर्वव्यापी विज्ञानन्दघन भगवानको परमतत्वलाई जानेर उसलाई कहिले नभुल्नु, जाग्नुको अर्थ यही हो। अनि समयको सदुपयोग पनि यही नै हो। जाडोको दिनमा जब हामी तलाव या खोला नदीमा नुहाउनको निम्ति जाँदछौं, तब पानी ठंडा लाग्दछ। अलि अलि खुट्टा भिज्छ र पनि नुहाउनु मन लाग्दैन। कम्मरसम्म पानी हुँदा पनि ठण्डा लागि रहन्छ, तर डुब्की लगाउने बित्तिकै ठण्डा भाग्नु थाल्छ र माडी माडी नुहाउनु मन लाग्छ। त्यस्तै शुरुमा कल्याणमित्र संघ गर्नु या त धर्म पालन गर्नु कठिन जस्तो लाग्छ, तर जब त्यसमा मन गहिरो पस्छ तब कठिनाइ पनि हराउँछ अनि फेरि आनन्दै-आनन्द लागेर आउँछ। कल्याणमित्रको कमिले हामीलाई प्रवृत्ति जागृत नभएको यही हाम्रो जाडो हो अनि जाडोको मौसम हो, यसैकारण हामीलाई शान्त पानी पनि ठण्डा लाग्छ तर यो ठण्डा पनि तनसम्म मात्रै हो जबसम्म हामी बाहिर हुन्छौं। धर्म कल्याणमित्र संघ पनि यस्तै हो। ◎

# तामाङ संस्कृति र वेशभूषा

–के.एम.तामाङ
महासचिव, सि.ता.बौ.संघ, गान्तोक

तामाङ जाति भोट-बर्मेली समुदायमध्ये मंगोलवंशीय परिवारका एक हुन् । यो जाति साह्रै परिश्रमी, प्राकृतिकप्रेमी र सधैं हाँसखेल मन पराउने जाति हुन्छन् । तामाङ जातिको आफ्नो छुट्टै भाषा, संस्कृति, परम्परा, कूलपितृ, नृत्य, गीत-संगीत, रीतिरिवाज, कलाकृति र स्वधर्म छन् । तामाङ जाति आदिकालदेखि नै बौद्ध धर्मावलम्वी हुन् । यसजाति मुख्यतः भोट मूलवाट आएता पनि समय र परिवेशवश भारतको पूर्वोत्तर क्षेत्र सिक्किम, असम, भोटाङ पश्चिम बंगालको दार्जीलिङ जिल्ला र विशेष गरी नेपालमा छरिएर बसेका पाइन्छन् । तामाङ जातिको मुख्य चिनारी डम्फु हुन् । त्यसरी नै घर आँगनको अगाडि लुङदर (ध्वजा) फरफराई राखेको र बैठक कोठा, पूजा कोठामा सजाई राखेको डम्फु तथा भगवान बुद्धको चित्रवाट तामाङ जातिलाई छर्लङ्ङै चिन्न सकिन्छ ।

तामाङ जातिको आफ्नै संस्कृति, वेशभूषा, खानपिन, रहनसहन, रीतिरिवाज, गरगहना, सामाजिक व्यवस्था, व्हाई (गीत), नृत्य, बाजागाजा र भाषा छन् । तामाङ जातिको मुख्य लुगाफाटा र गरगहना तिब्बतीहरुको भन्दा भिन्न पाइन्छ । लामो गावन् घुंडामुनिसम्म लामो भएको बक्खु तथा तोकाई भनिन्छ । यिनीहरु शिरमा ऊन तथा फरले बनिएको तागी, सेदे, कुलागी तथा उस्या (टोपी), खुट्टामा दोचा, पानाई, लाखाम तथा स्योम्बो जो ठण्डा ठाउँको निम्ति अति उपयोगी एक किसिमको जुत्ता लाउँछन् । पुरुष जातिले खेन्जार (कमिज), खेन्जो, सुरलुङ (सुरुवाल) लाउँछन् । स्त्रीवर्गले पनि पुरुषले भैं शिरमा तागी, हाङरे (चोली), खेन्जो लाउँछन् । शरीरको तल्लो भागमा फारे (फ्रक जस्तै) र खुट्टामा पानाई अथवा लाखाम (जुत्ता) लाउँछन् । गहनाको रुपमा चन्द्र तारा आकार भएको चुरा तथा बाईं जसलाई तामाङले माठी भन्छन्, च्याप (औंठी), न्हाबी म्हार (कानको सुन), बोटिल वा आलोङ (कुण्डल) र च्याल्डाङ (सिक्री) लाउने गर्छन् । तामाङ जातिको व्हाई (गीत) र स्याबा (नृत्य) अति कर्णप्रिय औ दर्शनप्रिय हुँदछ ।

सबै जनजातिहरुको हिमाली क्षेत्रमा होस् वा मदेशमा आ-आफ्नै सांस्कृतिक रहनसहन, लोकगीत र लोकनृत्यहरु हुन्छन् । यसरी नै तामाङ जातिको पनि आफ्नै भाषामा व्हाई, सेलो तथा लोकनृत्य छन् । तामाङ व्हाईमा संसारको सृष्टिदेखि दर्शन, संस्कृति, मायाप्रीति विषय गाउने गरिन्छ । चाड्पर्व, विहेवटुल तथा मेलापार्वततिर युवायुवती स्त्रीपुरुषहरु दोहोरी गीत औ जुवारी गीतहरु गाउने तथा नाच्ने गर्छन् । यस्ता जुवारी गीत औ नृत्यमा एकले अर्कालाइ पराजित गरे जीवनसाथी चुनिन पुग्छन् । तामाङ व्हाई औ स्याबामा भूलेपछि दिनरात बितेको पत्तै पाइँदैन । तामाङ जातिको महत्वपूर्ण बाजा डम्फु जो कोइराला काठको घेरो घोरलको छालाले मोहोरेको र बत्तीसवटा कीलाले कसेको हुन्छ । जसलाई बजाउँदा ट्याप दुङ दुङको सुन्दर आवाज निस्कन्छ । आदिकालमा एकजना पेमदोर्जी नामक तामाङ हिमालयको चाँप गुराँस औ अन्य सुन्दर फूलहरु फूलेको जंगलमा रुईसाङ नामकी प्रेयसीसित जाँदा पेमदोर्जीको दृष्टि केही टाढामा चर्दै गरेको घोरलमाथि पर्‍यो । तिनले आफ्नी प्रेयसीलाई नभनी घोरलमाथि काँड हान्यो । वेदनाले छटपटाउँदै लड्यो र प्राण त्याग गर्‍यो । त्यो दृश्यले रुईसाङ आफ्नो प्रेमी पेमदोर्जीसित रिसाइन् र भनिन् 'तिमीले यस निर्दोष घोरललाई मारेर ठूलो पाप गर्‍यौ र जवसम्म तिमीले यस घोरलको स्मृतिमा केही राम्रो काम गरिदिदैनौ तवसम्म यो पापदेखि मुक्त हुने छैनौ ।'

पेमदोर्जीले आफ्नी प्रेयसीबाट यी कुरा सुनेपछि पश्चताप भयो र त्यस मृत घोरलको छाला काडी मदेशतर्फ लागे । त्यस छाला सुकाएर कोइराला (अम्बुसिङ) को रुख काटी डम्फुको घेरो तयार पारे । त्यसपछि मलबाँसको बत्तीसवटा कीला बनाएर डम्फुको निर्माण गरेपछि लेकतिर लागे । लेकको घनघोर जंगलमा एक जोडी डाँफे चरी देखे । डाँफे भालेले पुच्छर ठाडो पार्दै पोथीको वरिपरि घुम्दै गीत गाउँदै नाच्दै आफ्नी प्रेयसी पोथी डाँफेलाई फकाउँदै गरेको मनमोहक दृश्य देखे । यो दृश्ले प्रेरित भएर आफ्नो डम्फुको शिरमा काठद्वारा डाँफे चरीको प्रतीक बनाई रुईसाङसमीप गएर आफ्नी प्रेयसीको वरिपरि व्हाई गाउँदै नाच्दै रुईसाङलाई खुशी तुल्याए र तिनले पनि व्हाईको चालमा नाच्दै आफ्ना प्रेमी पेमदोर्जीलाई साथ दिनथाले । यसरी डम्फु र व्हाईको सृजना भयो ।

## तामाङ जातिको वेशभूषा र गहना

| पुरुष : | स्त्री : |
|---|---|
| तागी (टोपी), | तागी, कुलागी (टोपी) |
| खेन्जार (कमीज) | हाङरे (चोली) |
| खेन्जो (Waist coat) | खेन्जो (Waist coat) |
| सुरलुङ, काङसु (सुरुवाल) | फारे (फ्रक) |
| पानाई, लाखाम (जुत्ता) | पानाई, लाखाम (जुत्ता) |
| | पाङदेन |
| | ऋछो (लाछा) |
| | गहना : आलोङ, न्हाबी म्हार (कानको गहना) |
| | ना म्हार (नाकको गहना) |
| | च्याल्डाङ (सिक्री) |
| | माठी (चुरा) |
| | च्याप (औंठी) |

यसरी नै सिक्किम तामाङ बौद्ध संघले गत वर्ष पर्यटन दिवसको उपलक्ष्यमा सिक्किम सरकारको पर्यटन विभागले गान्तोकको टी.एन.ए. हल र टाइटनिक पार्कमा पर्यटन सप्ताह आयोजना गरेको थियो । यसमा अन्य सबै जातिको 'झाँकी प्रदर्शन' र 'वेशभूषा प्रदर्शन' को कार्यक्रम पनि राखिएको थियो । यसमा सिक्किम तामाङ बौद्ध संघले पनि भाग लिएको थियो । जस्तै पूर्वकालका पुरुष महिलामा– श्री सनजीत तामाङ र श्रीमती पासाङ योन्जन । मध्यमकालीन पुरुष महिलामा– श्री निमा तामाङ र सुश्री अश्वीना लामाले भाग लिएका थिए । यसरी सिक्किम तामाङ बौद्ध संघले तयार पारेको वेशभूषालाई अखिल भारतीय तामाङ बौद्ध संघको १७ औं वार्षिक अधिवेशन २००२ मा चाल्सामा प्रदर्शन गरियो । जसलाई अ.भा.ता.बौ.स. तथा नेपाल तामाङ घेदुङले यसलाई तामाङ वेशभूषाको रुपमा मान्यता प्रदान गरेको छ । ◎

# सिक्किममा अविकसित भाषाहरूको उत्थान : एक विवेचना

–महानन्द पौड्याल

एसडीएफ पार्टीको गठन हुनासाथ पार्टी प्रमुख पवन चामलिङले पार्टीका भावी कार्यक्रम र नीतिको बखस गर्दै बोलेका कुराहरूमध्ये एक थियो सिक्किमका राज्य भाषाको रुपमा मान्यता प्राप्त गरेका चार भाषा-नेपाली, लेप्चा, भोटिया र लिम्बुबाहेक अन्य भाषाहरु जस्तै राई, गुरुङ, मगर, तामङ, शेर्पा, नेवार तथा सुनुवार जस्ता भाषाहरूलाई पनि राज्य भाषाको रुपमा मान्यता दिने कुरा । जब उहाँको पार्टी सत्तामा आयो, भनेका भाषाहरूलाई पनि राज्य भाषाको रुपमा मान्यता दिलाउनु भयो ।

सरकारको यस फसेलाले तीन किसिमका प्रतिक्रिया निम्त्यायो प्रथम थियो सरकारले लिएको निर्णयको पक्षमा । यस पक्षका प्रवर्तकहरूले भने, सामाजिक न्याय नपाई विलुप्तिको संगारमा पुगिसकेका हाम्रा भाषाहरूले बल्ल न्याय प्राप्त गरेर उनीहरूका विचारमा ती भाषाहरुको विकास हुनुपर्छ भनी चिनाउने कोही थिएन हाम्रा मुख्य मन्त्रीबाट विचार पुर्‍याइएको हुँदा अब यी भाषाहरूको दिन फर्कियो ।

दोस्रो पक्षले भन्यो, सरकारको यस नीतिले नेपाली जातिलाई टुक्रा टुक्रा पार्‍यो । यस पाईलाले नेपालीत्वको हत्या भयो, जातीयताको परम भावना खल्बलियो । अरु भाषालाई यसरी महत्व दिंदा नेपाली भाषाको विकासमा बाधा पर्नेछ । साम्प्रदायिक सद्भावना खल्बलिनेछ । अनि तेस्रो वर्गले भन्यो, यी भाषाहरूलाई मान्यता दिंदा नेपाली जातित्व टुक्रिन्छ, सद्भावना खल्बलिन्छ, नेपाली भाषाको विकास ठिंगुरिन्छ भन्नु मुर्खताबाहेक अरु केही होइन । भाषलाई मान्यता दिंदा जातीयता खल्बलिने भए पहिल्यै खल्बलिइ सकेको हुने थियो, किनभने धेरै पहिले लेप्चा भोटिया र लिम्बु भाषाले मान्यता पाइसकेका हुन् । भारतले जम्मा १८ भाषालाई भारतीय संविधानको आठौं अनुसूचीमा हालिएको छ तर भाषाकै कारणले देशमा कुनै अनर्थ भएको देखिँदिन, भएकै छैन । सिक्किममा राज्य भाषाको संख्या १० वटा भएको पनि धेरै भयो, आशंकित जातीयताको खलल भएको प्राप्त छैन । जति पनि भाषालाई मान्यता किन नदिइयोस् हाम्रो जातीय सद्भावनालाई बाह्र हातको टाँगाले पनि छुँदैन ।

सामाजिक न्यायको पक्षमा बोल्नेहरूको भनाइ सत्य नै छ । किनभने उनीहरूका भाषा आज लोप हुने स्थितिमा पुगिसकेका छन् । नेपालको एकीकरण भएपछि गोर्खा राजाहरूले बोल्ने गोर्खा (गोर्खाली) भाषा देशको राष्ट्रभाषा बन्यो । राष्ट्रभाषा बनेपछि देशका नियम कानून त्यसै भाषामा लेखिए, सरकारी कामकाज त्यसै भाषामा चल्यो । त्यस भाषामा ग्रन्थ लेखिए, साहित्य लेखिए । त्यसैको प्रचार भयो । अनेक जाति र जातको सम्मिश्रणले बनिएको नेपालमा एउटा सामान्य भाषाले जन्मधारण गर्नुपर्ने बाध्यता थियो त्यो बाध्यताको पूर्ति भयो गोर्खा (पछि नाम फेरिएर नेपाली) भाषाबाट । देश पछौटे थियो । अञ्चल अञ्चलका बासिन्दा पछौटे थिए, विद्याको ज्योतिले उजिलिएका थिएनन् । आफ्नो क्षेत्रमा आफ्नै भाषा (भाषा विज्ञानले 'बोली') प्रयोग गर्नमा कुनै छेकाबार थिएन । नेपाली भाषा सिक्नुपर्ने बाध्यता थियो सबैमा । यो भाषा सुबोध र सरल भएको हुँदा चाँडै फैलिंदै गयो । अञ्चल अञ्चलका भाषाहरूबारे कसैले सोचेन । सोच्ने क्षमता छँदै थिएन कसैमा । अनि बीचमा छायो नेपालमा राणातन्त्रको कालो बादल । अत्याचार, अन्याय, दुराचार, शोषण, दोहन त्यस तंत्रका गुरुमन्त्र थिए । गरीब थियो देश, अरु गरीब बन्यो । विकास शब्द कसैको मुखबाट निस्कनु हुँदैनथ्यो । जसले निकाल्यो त्यसको विनाश हुन्थ्यो । भाषा, शिक्षा, साहित्य जस्ता समवेदनशील विषयहरु राणाकालीन नेपालमा पाखे थिए । यहाँसम्म कि नेपाली भाषाको विकासमा पनि उनीहरुले नाना रकमका अड्चन र बाधा हाली साहित्यकारहरूलाई भयभीत पारी राखेका थिए । अन्य भाषाका भाषीहरूले आफ्नो भाषाको पक्षमा विचार गर्ने दिन आएन । नेवारी र लिम्बु भाषीहरूले आफ्नो विकासका निम्ति काम गरेका थिए भनिन्छ । यसरी गरिएका प्रयासका विरुद्ध कठोर दमननीति प्रयोग गरी विकास रोक्ने काम भएको कुरो कताकतै लेखिएको सुनिन्छ । राणातन्त्रले गरेन भन्न सकिन्न । त्यस तन्त्रले गर्नेभन्दा नगर्ने काम धेर गरेको कुरो सर्वसम्मत छँदैछ ।

गरीबीको मारले कंगाल भएको जनता देश छाडी विदेशिन थाले । थुम-थुमका, क्षेत्र-क्षेत्रका जनता झुण्ड झुण्डमा बाँधिएर सिक्किम, भोटाङ, दार्जीलिङ, डुवर्स, पूर्वाञ्चल तथा पश्चिमाञ्चलतिर फैलिए । तिनीहरु घरबाट बाहिरिंदा आफ्नै भाषा लिई आएका थिए । नेपाली भाषाको ज्ञान उति थिएन । पछि परदेशमा अन्य भाषाभाषीहरूसित मिसिएर बस्नुपर्ने अनिवार्यताको फलस्वरुप यसरी देश छाडी आएका नेपालीको मातृभाषा बन्यो नेपाली । नेपाली भाषामा पाठ्य पुस्तक लेखिए, नेपालीमा शिक्षा-दीक्षा शुरु भयो । साहित्य बन्यो, बढ्यो, फैलियो । नेपालबाट साथै लिई आएका आ-आफ्ना भाषाको प्रयोजन रहेन । यिनको पनि महत्व छ, मासिनु दिनुहुँदैन भनी कुनै जातले चिताएको थियो भने लिम्बुले चिताएको थियो तर नेपाली भाषाको प्रभावको अगाडि उनीहरूको प्रयासले उति भाका टिपेन । यसरी भाषाको इतिहासलाई केलाई हेर्दा कसैको अन्यायको शिकार बनी हाम्रा विविध बोली ठिंगुरिएका हुन् भन्न सकिन्न । नेपालको परिप्रेक्ष्यमा सामाजिक अन्याय भएको थियो होला तर भारतीय सन्दर्भमा भन्नुपर्दा विलुप्तिको संगारमा पुगेका नेपाली बाहेक अन्य भाषामाथि कसैको दमननीति चलेको प्रमाण पाइदैन । भारततिर नेपालीबाहेक अरु भाषा (हाम्रा) नि:सन्देह चाहिन्छन् भनी अरुको त के कुरा तिनै भाषाका बुद्धिजीवीहरूलेपनि अनुभव नगरेको कुरो स्पष्ट देखिन्छ ।

पृथ्वीनारायण शाहद्वारा नेपालको एकीकरण हुनुभन्दा पहिले नेपाल नामधारी कुनै देश थिएन । नेपाली भाषा, संस्कृति भन्ने छुट्टै भाषा एवं संस्कृति थिएनन् । एकीकरण पछाडि विभिन्न जाति र जातबाट बनिएका राज्यको नाम नेपाल राखियो । सबैका संस्कृति नेपाली संस्कृति भए । विजेताको भाषा गोर्खा भाषा देशको राष्ट्रभाषा बन्यो । नेपालभरि जति पनि जात र जाति थिए तिनीहरूमध्ये नेवारीबाहेक अरुमा राष्ट्रभाषाको रुपमा प्रतिष्ठित हुने गुणहरु थिएनन् । राष्ट्रभाषा बनेपछि त्यसले व्यापकता अंगाल्यो । भाषा सुबोध र सरल हुनाले ग्रहण गर्नेहरूलाई उति भार पनि परेन । गोर्खा भाषामा देशको संविधान बन्यो, नियम कानून बनिए सरकारी भाषा पनि त्यही भाषा भयो । त्यस भाषामा ग्रन्थहरु लेखिए । भाषा एक सूक्ष्म बीजबाट एक विशाल वृक्ष बन्यो । पछि नेपाल देशको भाषा गोर्खा भाषा नसुहाएको अनुभव गरी भाषाको नाम पनि 'नेपाली' बनाइयो । धनपति पछि धरणीधर, प्रशमान पछि पारसमणि भए जसरी ।

सबै जात र जाति नेपालीको नयाँ धारामा मिसिएका हुँदा उनीहरूका भाषाको विकास भएन । विकास गर्ने वर्ग नै विकसित थिएन । नेपालको एक प्रमुख लिम्बु जातिको प्रथम स्नातक (नेपालकै) १९५६ मा मात्र बनेको थियो भन त्यस जातिको पछौटेपनाको पोल खुल्छ । अरु जात र जाति लिम्बुहरु जति पनि विकसित थिएनन् अनि कसरी विकास हुन सक्थ्यो । आञ्चलिक भाषाहरूको यस्ता भाषाहरूलाई कसैको दबाउबाट होइन परिस्थितिले पछौटे बन्न लगाएको थियो । पछि आयो नेपालमा अत्याचारी राणा शासन । त्यस शासनमा नेपाली भाषालाई नै पनि कहिले मात्र विकसित पार्ने काममा केही भरथेग भएको थियो, हुनुपर्ने रुपमा होइन । त्यस्तो शासनकालमा अन्य भाषाको चासो नै कसले गर्थ्यो । नेपाल उपत्यकाभित्र नेवारी भाषाको प्रभाव थियो । हाकाहाकी कुनै प्रतिबाध थिएन त्यस भाषामाथि तर नेपालीलाई जसरी काखी च्यापीदिएको भने थिएन । भाषाको विकास भाषीहरूको संख्या र क्षेत्रमाथि पनि निर्भर रहन्छ । नेवारहरु काठमाडौं र यसको सेरोफेरोमा सीमित हुँदा उनीहरूको भाषा देशव्यापी बन्न नसक्ने कुरो प्रष्ट थियो ।

नेपालका अन्य भाषाका भाषीहरुले आफ्नो भाषाको प्रचारका लागि काम गरेको इतिहास पाईदैन । लिम्बुहरुले गरेका थिए तर तिनीहरूमाथि जोड्जुलुम भएको थियो त्यस भाषाको विरुद्धमा' भन्ने सुनिन आएको हो । अरु भाषाका भाषीहरूले यसतर्फ सोच्ने मात्र काम गरेका होइनन् । जनताको हितको रक्षा गर्ने सरकार नै जनताको शत्रु भए । त्यस देशका बासीहरु कंगाल हुन्छन् । यसरी कंगाल बनेका नेपाली समयसालमा आफ्नो माटोलाई सधैंका लागि त्यागी विदेशिन थाले । कोही सुखिम-दार्जीलिङतिर, कोही भोटाङ, बर्मा, भारतका पूर्वाञ्चल तथा पश्चिमाञ्चलतिर बसैं सरे । नेपालका क्षेत्र क्षेत्रबाट मानिस झुण्ड झुण्डमा जमेर बाहिरिए । यसरी आउँदा उनीहरुले आफ्ना आञ्चलिक भाषा साथै लिएर आएका थिए । बाहिर आई ती जम्मै एकै थलोमा मिसिएर बस्नुपर्दा सामान्य भाषाको खाँचो पर्‍यो । त्यसको पूर्ति गर्‍यो नेपाली भाषाले । आ-आफ्ना भाषा (बोली) आफ्नो घर र संगारमा सीमित रहे नेपाली भएपछि आफ्ना भाषाको आवश्यक्ता नै परेन । शिक्षा-दीक्षा नेपालीमा हुनथाल्यो । साहित्य, संस्कृति नेपाली । कसैले, कुनै बुद्धिजीवीले आफ्ना भाषाप्रति सोच गरेन । सोच्नुपर्छ भनी चिताएन पनि । नेपाली जाति एकभाषीय जाति बन्यो ।..........रहल आगामी अंकमा

लोछारला ज्याबाडान्बा !! **लोछार मनाउने तरिका** लोछारको शुभकामना !!

# लोछार मनाउने तरिका

आगामी तारिक २ फरवरी, २००३ देखि ता लो (घोडा वर्ष) सकिएर लुग लो (भेडा वर्ष) शुरु हुँदैछ।
यस वर्ष लुग लो अथवा भेडा वर्ष र छ्युखाम (जल तत्व) परेको छ।

तामाङहरु आफू बौद्ध भएको नाताले आफ्नो पक्षमा एउटा पनि सांस्कृतिक पर्व नभएको र अहिलेसम्म हिन्दु पर्वलाई नै आफ्नो पर्व भनेर भूलि रहेकोले तामाङहरुले आफ्नो सही पहिचान विश्वसमक्ष प्रस्तुत गर्न असफल भएको महसुस गरी सन् १९९४ मा तामाङहरुको एक अन्तर्राष्ट्रिय बैठकले आफ्नो मौलिक पर्वको पुनर्जागरण हेतु सोनाम लोछारलाई अप्नाउने निर्णय लिएको थियो। हुन त त्यसभन्दा अघिदेखि नै कतिपय तामाङहरुले फाटाक फुटुक लोछार मनाउँदै आएका थिए र उपरोक्त निर्णय पछि लोछार मनाउने तामाङहरुको संख्यामा वृद्धि भयो। ९० प्रतिशत तामाङहरुले गत दशैं नमनाई आफ्नै पर्व पर्खिरहेकोले उनीहरुलाई लोछार कसरी मनाउने भन्ने केही जानकारी दिन हामी हाम्रो कर्तव्य ठानेका छौं। यसबाट हाम्रा तामाङ बौद्धजनले निश्चय लाभ उठाउने छन् भन्ने हाम्रो बिश्वास छ।

**लोछारको तयारी :** लोछारको एकदिन अघिसम्म घरको सफा सुग्घर, रंग पचेरा गर्नुपर्छ। बिशेष गरेर छ्योस्योम कोठा राम्रो सफा गरेर छ्योस्योम माथि नयाँ दिमफुब (चँदुवा) चढाउन पर्छ। दैलोमा पनि नयाँ स्याम्फुब अनि अष्टमंगल (टाशी ताग् ग्ये) चिन्ह भएको पर्दाहरु लगाएर सजाउनु पर्छ। छ्योस्योममा छेमार, दुइची, दादर, खाब्से, जिरो, बाबर, अलुम, कन्दमूल तथा छोगहरु चढाउनु पर्छ। चाम्पामा चिनी हालेर खारेको घिउमा राम्रो भुटेर दुईवटा फुरुमा भुसी पारेर हाली त्यसमाथि ठापग्येन (काठमा डाल्डाद्वारा बनाइएको रंगीन फूल) सजाउनु पर्छ। अचेल यस्ता फूलहरु कागजको पनि लोछारको समयमा बजारमा किन्न पाइन्छ। कागजको नै सजाए पनि हुन्छ। यो घिउको भए पनि, कागजको भए पनि दुईवटा नै चाहिन्छ। त्यसपछि दुईवटा फुरुमा दुईची सजाउनु पर्छ। दुईचीको स्थानमा जाँड रक्सी नचलाएर फलको रसहरु चढाउनु पर्छ। छ्योस्योममा नयाँ लुगा वा रंगीन कागजहरु ओछ्याएर छ्योपाहरु भरेर चढाउनु पर्छ, ठुई पनि नयाँ बनाएर बुम्पामा भर्नुपर्छ। छेमार र दुईची छ्योस्योममा चढाउने एक भाग अनि घरका परिवार लगायत लोछार मान्न आउने आफन्त हरुलाई लोछारको स्वागत जनाउनको निम्ति एक भाग सजाउनु पर्छ। दादर र बुम्पा पनि छ्योस्योममा नै सजाउनु पर्छ। खाबस्सेहरु बनाएर छ्योस्योमको अघाडि टेबलमा थाक पारेर सजाई अन्य छोगहरु पनि सजाउनु पर्छ। घरमा पूजाको ठूलो बत्ती छ भने त्यसमा सलेदो लगाई डाल्डा भरेर राख्नुपर्छ। घर मै ग्याम्छो (१०८ बत्ती) छ भने बत्ती पनि तयार पारेको राम्रो। लोछार कै दिन लुङदर चढाउने भए बाँसहरु अघिल्लो दिन नै ल्याई राखेको असल। घर परिवार अनि मान्न आउने आफन्तहरुलाई लाइदिनको निम्ति खादाहरु अघिबाटै भेला गरेको छ भने धेरै सुविधा हुन्छ। दैलोको दुईपट्टि गाग्री अथवा फूलदानीमा चोखो पानी भरेर फूलहरु सजाउनु पर्छ। यी सब लोछार को अघिल्लो दिनसम्म तयार पार्ने विषयहरु हुन्।

खानेले लोछारको पूर्व सन्ध्यामा नौ प्रकारका अन्नहरु मिसाएर पकाएको कु थुग (खोले) खाने गर्छन्। यी सब खानैपर्छ भन्ने केही छैन। बेलुकी छ्योस्योममा सपरिवार बसेर बितेका वर्षमा कुनै अप्रिय कार्य कार्य जानअन्जानमा भए बापत क्षमा माग्दै पूजा प्रार्थना गर्नुपर्छ अनि यस्ता भूलहरु नयाँ वर्षमा नदोहोऱ्याउने प्रण गर्नुपर्छ। त्यसपछि मध्यरात्री बाह्र बजी नयाँ वर्ष अथवा लुग लोको आगमनलाई हर्षोल्लासका साथ नाचगान गर्दै स्वागत जनाउनु पर्छ।

**लोछारको दिन :** घरका सबै परिवार बिहान उठेर नुहाई धुवाई गरी पूजा चढाई लुङदरहरु फहराई बिभिन्न परिकारका भोजनहरु तयार गरेर सबैले नयाँ वस्त्र धारण गरी आँगनमा लुङदरको वरिपरि भेला भई लामा उपलब्ध भए साङ सेरक्येम तथा लुङदर राब्ने गर्नुपर्छ नभए हप्ता दिनभित्रमा जुन दिन लामा उपलब्ध हुन्छ त्यहीदिन राब्ने गरेपनि हुन्छ अथवा अघिबाटै लुङदर राब्ने गरेर ल्याएको छ भने त्यसदिन राब्ने गर्नु पर्दैन। राब्ने गरेपनि नगरेपनि घरकाहरु लुङदर वरिपरि भेला भएर टेबलमा छ्योस्योमको छेमार, दुईची, दादर, बुम्पा, मरमे, धूपौरोमा साङ सजाएर आफ्नैपाराले इष्ट देवता, कूल देवतादिलाई प्रार्थना गरेर नयाँ वर्षभरी आकाश व्यापी प्राणीको सुख शान्ति र समृद्धिको कामना गर्दै 'क्ये क्ये सो सो ल्हा ग्याल्लो! टाशी देलेग फुन्सुम छोगपर स्यो (अशान्ति, दरिद्रता, कलह, दुर्भिक्ष, महामारीको हार होस्, सुख शान्ति र धर्मको विजय होस्) भन्ने नारा लगाउँदै भेला भएका सबैले अलिअलि चाम्पा आकाशतिर छर्नुपर्छ। त्यसपछि त्यहाँ सजाइएका सामग्रीहरु सबैले एक एकवटा श्रद्धाकासाथ बोकेर लुङदरलाई तीनपल्ट प्रदक्षिणा (कोर्वा) गरेर छ्योस्योम कोठामा लगेर सजाउनु पर्छ। र त्यहाँ ग्याम्छो तयार पारेको छ भने घरका मूल व्यक्ति लगायत सबैले बालेर तीन तीनचोटि ल्हास्याममा ढोगी त्यहाँ ओछ्याइएको आसनमा बस्नुपर्छ र छ्याङदीमा छेमार, दुईची सजाएर मूल व्यक्तिले साङ आदि जलाएर ल्हास्यामपट्टि तीनपल्ट कलशको अमृत, छेमार र दुईचीले क्रमैसित छर्केर परिवारका सदस्यहरुलाई कोको म्हेन्दोको टीका लगाई दिएर छेमारले तीनपल्ट देब्रेबाट दाहिनेतर्फ छर्केर चम्चीले हातमा दुईची दिई खादा लगाईदिनुपर्छ र साना नानीहरुलाई गच्छेअनुसारको दक्षिणा दिनुपर्छ। घरका यी मूल व्यक्तिले लोछार मान्न आएका आफन्तजनलाई पनि यही रीतले आशिष दिनुपर्छ। र आशिष थाप्नेले पनि उठेर आदरणीय व्यक्तिहरु लाई ढोग गर्नुपर्छ। लोछार को आशिष दिने वृद्ध मान्यजनलाई आफ्नो सामर्थ्य भए नयाँ वस्त्र, मजेत्रो, टोपी, जुत्ता आदि उपहार दिनसके अझ राम्रो। त्यसपछि सबैजना बसेर तयार पारिएको भोजन खाईपिई नाचगानको आनन्द लिन सक्छन्। भोलिपल्टदेखि आफन्तहरुकोमा कोशेली बोकी भेटघाट गर्न जानुपर्छ। चेलीहरु पनि माइता जाने अनि इष्टमित्रहरुलाई निम्त्याई खानपिन गर्ने र आपस्तमा शुभेच्छा आदानप्रदान गर्ने। लोछारलाई आगामी पाँच दिनसम्म यहीरुपले मनाउन सकिन्छ। ◎


–लामा ल्हाक्पा बमजन
कुमार ह्योञ्जन
गान्तोक, सिक्किम
☎ २२४१३५



Published By Hyonzon Publications, Advisor; Lama Lakpa Bomzon, Chief Editor: Tamang Kumar Hyonzon , Guest Editor: Tamang Ajitman Lopchen
Assistance Editor: Tamang Nima, Marketing Manager Tamang Diwang Ghishing , *MAILING ADDRESS* : Email gangtok yulsa@ yahoo. com
K. HYONZON SCHEY BUSTY,Ph.No.224135 P.O. GANGTOK PIN-737101, SIKKIM, INDIA, *PRINTED:* BABA OFFSET TADONG, GANGTOK, Sikkim, India